# उन्नयन

आजभोलिको चलतीको सूर्यसिद्धान्तग्रन्थ
मूल वैदिक परम्पराको वेदाङ्गग्रन्थ हैन
— प्रमोदवर्द्धन कौण्डिन्न्यायन
पृ. ६५ – ८०

मूल्य रु.

४१

# उन्नयन

[ चिन्तन, मन्थन तथा अनुसन्धानप्रधान त्रैमासिक ]

२०६० साल कार्तिक-मङ्सिर-पुस अङ्क ४९



*मूल्य : रु. ३५/-*



*प्रकाशक*
**उन्नयन प्रकाशन**
पो. ब. नं. १३९४४
अनामनगर, काठमाडौं (नेपाल)
फोन : ४-२४२९३०

प्रमोदवर्धन कौण्डिन्न्यायन

# आजभोलिको चल्तीको सूर्यसिद्धान्तग्रन्थ मूल वैदिक परम्पराको वेदाङ्ग-ग्रन्थ हैन

आजभोलिका प्रायः सबै ज्योतिषीहरू "**अचिन्त्याव्यक्तरूपाय**" इत्यादि "**रहस्यं ब्रह्मसम्मितम्**" इत्यन्त प्रचलित सूर्यसिद्धान्तनामक ग्रन्थलाई वेदाङ्गज्योतिषशास्त्रको प्रमुख आधारभूत ग्रन्थ मान्छन् । यस ग्रन्थमा मध्यमाधिकार, स्पष्टाधिकार, त्रिप्रश्नाधिकार, चन्द्रग्रहणाधिकार, सूर्यग्रहणाधिकार, छेद्यकाधिकार, ग्रहयुत्यधिकार, ग्रहनक्षत्रयुत्यधिकार, उदयास्ताधिकार, चन्द्रशृङ्गोन्नत्यधिकार, पाताधिकार, भूगोलाध्याय, ज्योतिषोपनिषदध्याय, मानाध्याय यति प्रकरण छन् । यस ग्रन्थका १६६० संवत्मा काशिमा लेखिएको रङ्गनाथको गूढार्थप्रकाशिका टीकासमेतका ३-४ टीका पाइन्छन् । मूल वैदिक परम्पराको यथार्थ ज्ञान नभएका १७१५ संवत्तिरका सिद्धान्ततत्त्वविवेककार कमलाकर समेतका अर्वाचीन ज्योतिषीहरू यस सूर्यसिद्धान्त-ग्रन्थलाई वेदतुल्य प्रामाणिक ग्रन्थ मान्छन् ।

भारतमा अङ्ग्रेजको उपनिवेश भएका वेलादेखि चलेको आजभोलि प्रचलित संस्कृतशिक्षाप्रणालीमा पनि ज्योतिष विषयको पठन-पाठनमा उक्त सूर्यसिद्धान्त ग्रन्थको प्रमुख स्थान रहिआएको देखिन्छ ।

भारतवर्षमा चार्वाक, जैन, बौद्ध, वैष्णव, शैव, शाक्त इत्यादि सिद्धान्तका प्रभावले र इरानी, ग्रीक, शक, हूण, मुसलबान, इसाई इत्यादिका आक्रमणहरूले गर्दा २५०० वर्ष जति यतादेखि वैदिक अध्ययन-बोध-आचरण-प्रचारणमा विशेष विघ्न-बाधाहरू पर्दैआएकाले शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द, ज्योतिष यी छवटै वेदाङ्गले सहित वेदहरूको राम्रो अध्ययन-मनन र अनुसरण हुन नसकेको हुँदा वर्तमान सूर्यसिद्धान्तका र मूल वैदिक परम्पराका कालगणनाप्रकारका मोटामोटा भेदहरूमा पनि विद्वान्मै गनिएका व्यक्तिहरूको पनि ध्यान नजानाले र तिनको विवेक हुन नसकेकाले चल्तीको सूर्यसिद्धान्तग्रन्थलाई र त्यस्तै अरू सिद्धान्तशिरोमणि, ग्रहलाघव इत्यादि प्रचलित ज्योतिषग्रन्थहरूलाई पनि वेदाङ्गज्योतिषशास्त्रका प्रधान ग्रन्थ मान्ने भ्रम भारतवर्षमा ८०० वर्ष जति अगिदेखि नै व्याप्त हुँदै आएको बुझिन्छ ।

अब स्वाद्ध्यायशालामा भएका वेद-वेदाङ्ग-वेदोपाङ्ग-स्मृति-पुराणादि ग्रन्थका अध्ययन-मननका आधारमा स्पष्ट हुन आएको 'सूर्यसिद्धान्तादि प्रचलित ज्योतिषग्रन्थ मूल वैदिक परम्पराका वेदाङ्गग्रन्थ हैनन्' भन्ने तथ्यलाई हृदयङ्गम गर्नका लागि पाठकहरूलाई सहयोग पुऱ्याउन तल केही कुरा सङ्क्षेपमा लेखिँदै छ ।

(१) श्रौत-स्मार्त-पौराण-कृत्यका लागि आवश्यक पञ्चवर्षात्मक युगको र त्यसभित्रका संवत्सर, परिवत्सर, इदावत्सर (इडावत्सर), इद्वत्सर (अनुवत्सर), वत्सर (इद्वत्सर) यी वर्षहरूको ज्ञान गर्ने उपाय (करणसूत्र) प्रचलित सूर्यसिद्धान्त, आर्यभटीय, ब्राह्मस्फुटसिद्धान्त, सिद्धान्तशिरोमणि, ग्रहलाघव इत्यादि ग्रन्थहरूमा नभएकाले ती ग्रन्थहरू मूल वैदिक परम्पराका ग्रन्थ हैनन् भन्ने कुरा स्पष्ट हुन्छ ।

श्रौतयज्ञमा पञ्चवर्षात्मक युगको ज्ञानको आवश्यकता पर्ने कुरा वेदमन्त्रसंहिता-ब्राह्मणग्रन्थहरू राम्ररी पढेका व्यक्तिहरू र वेदमा संवत्सर-परिवत्सरादि वर्षहरूको उल्लेख छ भन्ने कुरा सम्म थाहा पाएका व्यक्तिहरू पनि सजिलै बुझ्न सक्छन् । संवत्सर-परिवत्सरादिको उल्लेख माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-मन्त्रार्षसंहितामा (२७।४५, ३०।१५), माद्ध्यन्दिनीयवाजसनेयिशुक्लयजुर्वेद-शतपथब्राह्मणमा (८।१।४।८), कृष्णयजुर्वेदका काठकसंहितामा (४०।६[४०।४०]) र मैत्रायणीयसंहितामा (४।९।१८), कृष्णयजुर्वेदकै तैत्तिरीयब्राह्मणमा (१।४।१०।१, ३।८।२०।५, ३।१०।४।१) र तैत्तिरीयारण्यकमा (४।१९।१) तथा सामवेदका ताण्डिब्राह्मणमा (१७।१३।१७) पनि पाइन्छ ।

पञ्चसंवत्सरमय युगको ज्ञान वैदिक चयनयागका लागि आवश्यक भएको कुरा स्मृतिसन्दर्भका षष्ठ भागमा सङ्गृहीत लौगाक्षिस्मृतिमा स्पष्ट गरिएको छ । जस्तै–

**तद्वेदमन्त्रसाध्यत्वाद् यज्ञो वेदस्वरूप्यति ।** (पृ. ३७४) इत्यादि ।

**पञ्चसंवत्सरमयं जगदेतच्च् चराचरम् ।**
**ते पञ्च संवत्सराश्चापि त इमे परिकीर्तिताः॥** (पृ. ३७७)॥

अर्थ– वेदमन्त्रबाट सिद्ध गर्न पर्ने हुनाले यज्ञ पनि अत्यन्तै वेदस्वरूपी हुन्छ । इत्यादि । यो चराचर जगत् पञ्चसंवत्सरमय छ । यी पाँच संवत्सर पनि यिनै कहिएका छन् ।

स्मृतिसन्दर्भका षष्ठ भागमा सङ्गृहीत मार्कण्डेयस्मृतिमा वैदिक संवत्सर-परिवत्सर-इडावत्सर-अनुवत्सर-इद्वत्सरहरूमा क्रमैले तिल-जौ-वस्त्र-धान्य-रजतहरूको दानको विधान गरिएको छ । जस्तै–

**संवत्सरे तिलान् दद्याद् यवांस्तु परिवत्सरे ।**
**इडापूर्वे च वस्त्राणि धान्यं चाऽप्यनुवत्सरे ॥**
**इद्वत्सरे तु रजतं क्रमाद् देयानि शक्तितः । (पृ. १३४)॥**

अर्थ– संवत्सरमा तिलको दान गर्नू, परिवत्सरमा जौको दान गर्नू, इडावत्सरमा वस्त्रको दान गर्नू, अनुवत्सरमा धानको दान गर्नू, इद्वत्सरमा चाँदीको दान गर्नू । आँफ्नो शक्तिअनुसार यी संवत्सरादिमा क्रमैले यी दानहरू दिन योग्य छन् ।

विष्णुधर्मोत्तरपुराणमा पनि संवत्सर-परिवत्सरादि वर्षहरूमा तिल जौ इत्यादिका दानले विशेष ठुलो फल मिल्ने कुरा बताइएको छ । जस्तै–

**संवत्सरे तथा दानं तिलस्य च महाफलम् ।**
**परिपूर्वे तथा दानं यवानां द्विजसत्तमाः ॥**
**इडापूर्वेन्नवस्त्राणां धान्यानां चानुपूर्वके ।**
**इत्पूर्वे वत्सरे दानं रजतस्य महाफलम् ॥**

–३।३१७२-३; द्रष्टव्य- हेमाद्रिकृत चतुर्वर्गचिन्तामणि दानखण्ड, पृ. ८९० ।

अर्थ– हे श्रेष्ठ ब्राह्मणहरू हो, संवत्सरमा त्यस प्रकारले तिलको दान ठूलो फल दिनेवाला हुन्छ, परिपूर्वक वत्सरमा (परिवत्सरमा) जौको दान ठूलो फल दिनेवाला हुन्छ, इडापूर्वक वत्सरमा (इडावत्सरमा) अन्न र वस्त्रको दान ठूलो फल दिनेवाला हुन्छ, अनुपूर्वक वत्सरमा (अनुवत्सरमा) धान्यहरूको दान ठूलो फल दिनेवाला हुन्छ, इत्पूर्वक वत्सरमा (इद्वत्सरमा) चाँदीको दान ठूलो फल दिनेवाला हुन्छ ।

विष्णुधर्मोत्तरपुराणमा प्रतिपादित उक्त संवत्सरादिदानहरूको हेमाद्रिकृत चतुर्वर्गचिन्तामणिका दानखण्डमा (पृ.८९०) पनि "**अथ संवत्सरदानानि विष्णुधर्मोत्तरे**" इत्यादि भनी प्रतिपादन गरिएको छ। त्यहाँ "**संवत्सरादयश्च ज्योतिःशास्त्रे प्रसिद्धाः**" पनि भनिएको छ । किन्तु सूर्यसिद्धान्तादिमा संवत्सरादिको कुनै उल्लेख पाइँदैन । वेदका व्याख्याकार सायणाचार्यका दाजु माधवाचार्यका कालमाधव भन्ने प्रसिद्ध धर्मशास्त्रनिबन्धमा पनि "**तेषां पञ्चानां विनियोगो विष्णुधर्मोत्तरे पठ्यते**" इत्यादि (द्वितीय प्रकरण, संवत्सरनिर्णय, पृ. ३५) भनेर संवत्सर-परिवत्सरादिमा गर्दा विशेष महाफल दिने उक्त दानहरूको उल्लेख छ ।

विष्णुधर्मोत्तरपुराणमा (२।१७५।१०–१२) राजाले विजययात्रा गर्दा पनि संवत्सर-परिवत्सरादिको विशेष विचार गर्नपर्ने कुरा प्रतिपादित छ । जस्तै–

**वाय्वग्निदिक्समुद्भूतं परिधिं तु न लङ्घयेत् ।**
**राम संवत्सराद्येषु वर्षेष्वेव महीपतिः॥**
**संवत्सरमदिक् प्राची परिपूर्वस्य दक्षिणा ।**
**तत्पूर्वस्यापरा ज्ञेया चाऽनुपूर्वस्य दक्षिणा ।**
**अद्वारस् तु विनिर्दिष्टस् तथा वत्सरसंज्ञितः ॥**

संवत्सर-परिवत्सरादि वर्षमा गरिने देवप्रतिष्ठाको विशेष फल पनि विष्णुधर्मोत्तरपुराणमा (३।९६।११-१३) बताइएको छ ।

संवत्सर-परिवत्सरादि वर्षहरूमा नृहय-नृवराहादि प्रादुर्भावहरूको (अवतारहरूको) विशेषतः पूजा गर्ने विधान पनि विष्णुधर्मोत्तरपुराणमा बताइएको छ (३।१२०।२) । जस्तै–

**नृहयं नृवराहं च नरसिंहं च वामनम् ।**
**त्रिविक्रमं तु धर्मज्ञ पञ्चस्वब्देषु पूजयेत् ॥**

संवत्सर-परिवरत्सरादि पाँच वर्षहरूमा त्योत्यो वर्षका अधिष्ठातृदेवतारूप अग्नि, सूर्य इत्यादि देवताहरूको विशेष अनुष्ठान गर्ने पञ्चमूर्तिव्रतको विधान पनि

विष्णुधर्मोत्तरपुराणमा (३।१५३।१–६) छ र त्यसको ठुलो फल पनि बताइएको छ । यस व्रतको उल्लेख कालमाधवमा पनि भएको छ (द्वितीय प्रकरण, संवत्सरनिर्णय, पृ.३६) । संवत्सर-परिवत्सरादि चार संवत्सरका चार अधिष्ठातृदेवताहरू तैत्तिरीयब्राह्मणमा (१।४।१०।१) र ताण्डिब्राह्मणमा (१७।१३।१७) पनि उल्लिखित छन् ।

उक्त विवरणबाट श्रुति-स्मृति-पुराणमा विधान गरिएका कृत्यविशेषका लागि संवत्सर-परिवत्सरादि पाँच वर्षविशेषहरूको ज्ञान अत्यावश्यक हुन्छ भन्ने कुरा स्पष्ट हुन्छ । यस स्थितिमा संवत्सर-परिवत्सरादि वर्षविशेषको कुनै उल्लेखै नगर्ने र ती वर्षविशेषको ज्ञानको कुनै उपायै (करणसूत्रै) नदेखाउने सूर्यसिद्धान्तादि प्रचलित ज्योतिषग्रन्थहरू मूल वैदिकपरम्पराका ग्रन्थ हैनरहेछन् भन्ने कुरा स्पष्ट हुन्छ । बृहत्संहितामा संवत्सर-परिवत्सरादिको उल्लेख भए पनि त्यहाँ ती वर्षविशेषहरू बार्हस्पत्य वर्षविशेषका रूपमा देखाइएकाले र वैदिक संवत्सर-परिवत्सरादि भने चान्द्रवर्षविशेष भएकाले बृहत्संहिताको उक्त उल्लेख पनि मूल वैदिक परम्पराको हैन भन्ने कुरा स्पष्ट हुन्छ ।

(२) मूल रूपमा वैदिक धार्मिक वर्ष चान्द्रवर्ष हो । यो कुरा वैदिक मास, ऋतु र अयन समेत मुख्य रूपमा चान्द्र नै भएको, ऋग्वेददेखि नै अधिमासको उल्लेख पाइएको समेत कुराबाट र लगधमुनिप्रोक्त वेदाङ्गज्योतिषग्रन्थमा "**माघशुक्लप्रपन्नस्य पौषकृष्णसमापिनः**" (श्लो. ५) भनिएको कुराबाट पनि स्पष्ट हुन्छ । यस विषयमा स्वाद्ध्यायशालाकुटुम्बको स्वधर्मसन्देश(४)मा श्रुति-स्मृति-पुराणहरूबाट पर्याप्त प्रमाण दिएर मनग्य प्रकाश पारिसकिएको छ । वैदिक प्राकृतिक तथा धार्मिक वर्षको आरम्भ माघशुक्लप्रतिपदामा हुने कुरा लगधमुनिका उक्त वचनबाट स्पष्ट हुन्छ । किन्तु प्रचलित सूर्यसिद्धान्तको मुख्य वर्ष सौर भएजस्तो देखिन्छ र वर्षारम्भ अनिश्चित भएजस्तो बुझिन्छ । प्रचलित सूर्यसिद्धान्तमा "**द्विराशिनाथा ऋतवस् ततोऽपि शिशिरादयः । मेषादयो द्वादशैते मासास् तैरेव वत्सरः**" (मानाध्याय, श्लो.१०) भन्ने उल्लेख छ । यसरी सूर्यसिद्धान्तले ऋतुहरूलाई शिशिरादि भन्ने र मासहरूलाई मेषादि भन्ने गरी यस विषयमा अन्नोलको सृष्टि गरेको छ । यसबाट सूर्यसिद्धान्तको वर्षगणना शिशिरादि हो कि मेषादि हो त भन्ने सन्देह पर्छ । सूर्यसिद्धान्तमा "**युता मासैर् मधुशुक्लादिभिर् गतैः**" भन्ने उल्लेख पनि (मध्यमाधिकार, श्लो.४८) भएकाले त्यहाँ मधुशुक्लादि वर्ष पनि मानिएको जस्तो देखिन्छ । यसबाट पनि प्रचलित सूर्यसिद्धान्तग्रन्थ "**माघशुक्लप्रपन्नस्य**" इत्यादि भनेर वर्षलाई स्पष्ट रूपमा माघशुक्लादि मान्ने मूल वेदाङ्गज्योतिषग्रन्थको स्पष्ट रूपमा प्रतिकूल देखिएको हुनाले प्रचलित सूर्यसिद्धान्तग्रन्थ मूल वैदिक परम्पराको ग्रन्थ हैन भन्ने स्पष्ट हुन्छ ।

(३) वैदिक परम्परामा अयन चान्द्रऋतुत्रयात्मक मानिएका छन् । यो कुरा अयनमुखहरूमा गरिने वैदिक निरूढपशुबन्धयाग पनि मुख्य रूपमा चान्द्रतिथिविशेषमा नै गरिने कुरा वैखानसश्रौतसूत्रको "**ऐन्द्राग्नेन सौर्येण प्राजापत्येन वा निरूढपशुबन्धेन प्रतिसंवत्सरं प्रत्ययनं प्रतिषण्मासं वा यक्ष्यमाणः पौर्णमास्याममावास्यायामापूर्यमाणपक्षे पुण्ये नक्षत्रे वा यजेत**"(१०।१) भन्ने वचनबाट

स्पष्ट रूपमा बुझिने हुनाले वैदिक परम्परामा अयन सौरगतिसापेक्ष भए पनि त्यो पनि मूल रूपमा चान्द्रगणनाकै आधारमा मानिने कुरा स्पष्ट रूपमा बुझिन्छ । वैदिक अयन सौरगतिसापेक्ष चान्द्रमानका आधारमा नै मानिने कुरा सुश्रुतसंहिताको "**चन्द्राऽऽदित्ययोःकालविभागकरत्वाद् अयने द्वे भवतो दक्षिणमुत्तरं च । तयोर् दक्षिणं वर्षाशरद्धेमन्ताः, उत्तरं च शिशिरवसन्तग्रीष्माः**" (१।६।७) भन्ने वचनमा अयनको विभागका कारणमा पनि चन्द्रमाको समेत उल्लेख गरिएकाबाट पनि स्पष्ट हुन्छ । तीन चान्द्र ऋतुहरूको वा छ चान्द्र महिनाहरूको एक अयन मान्ने कुरा पुराणहरूका र अन्य प्राचीन ग्रन्थहरूका कालगणनाविषयका प्रसङ्गका वचनहरूबाट स्पष्ट हुन्छ । ती वचनहरू यी हुन्–

(क) **मासः पक्षद्वयात्मकः । तैः षड्भिरयनम् ॥**
–कूर्मपुराण १।५।८, पद्मपुराण सृष्टिखण्ड ३।६, विष्णुपुराण १।३।९-१० ।

(ख) **त्रिंशद्दिनैर् भवेन् मासः पक्षद्वितयसंयुतः ।**
**ऋतुर् मासद्वयेन स्यात् तत्त्रयेणाऽयनं स्मृतम् ॥**
–नारदीयपुराण १।५।२३-२४ ।

(ग) **पक्षः पञ्चदशाऽहानि शुक्लः कृष्णश्च मानद ।**
**तयोः समुच्चयो मासः पितॄणां तदहर्निशम् ॥**
**द्वौ तावृतुः षडयनं दक्षिणं चोत्तरं दिवि ।**–भागवतपुराण ३।११।१०-११ ।

(घ) **पक्षौ द्वौ मास उच्यते । तैः षड्भिरयनम् ॥**–मार्कण्डेयपुराण ४३।२४-२५

(ङ) **द्वौ पक्षौ च भवेन्मासो द्वौ मासावन्तरावृतुः ।**
**ऋतुत्रयमयनं स्याद् द्वेऽयने वर्षमुच्यते ॥**–वायुपुराण १।५०।१७७

(च) **त्रिंशत्सङ्ख्यैरहोरात्रैर् मासः पक्षद्वयात्मकः ।**
**ज्ञेयं पित्र्यमहोरात्रं मासः कृष्णसितात्मकः ॥**
**मासैस्तैरयनं षड्भिः ॥**–शिवपुराण ७।१।८।५-७ ।

(छ) **विनाडिकानां षष्ट्या स्यान् नाडिकैका दिनं भवेत् ।**
**तत्षष्ट्या, दिवसास् त्रिंशन् मासः पक्षद्वयात्मकः ॥**
**मासौ द्वावृतुरित्युक्तस्तैष् षड्भिर् वत्सरो भवेत् ।**
**अयनद्वितयाकारः शीतवर्षोष्णसंश्रयः ॥**
–स्कन्दपुराण वैष्णवखण्ड १।३६।३०-३१ ।

(ज) **पक्षौ द्वौ तौ (तत्–)कृतो मासो मासौ द्वावृतुरुच्यते ।**
**अयनं चर्तुभिस् त्रिभिरब्दं द्वे अयने स्मृतम् ॥**
–स्कन्दपुराण आवन्त्यखण्ड १।४८।११

(झ) **तैः पञ्चदशभिः पक्षो द्विपक्षो मास उच्यते ।**
**मासैश्चैवाऽयनं षड्भिर् वर्षं स्यादयनद्वये ॥**
–स्कन्दपुराण प्रभासखण्ड १।१९।११-१२, १।१०५।३६ ।

(ञ) **पक्षद्वयेन मासः स्यान् मासैः षड्भिर् द्विजोत्तमाः ।**
**अयनं द्वेऽयने वर्षं क्रमात् ते दक्षिणोत्तरे ।**

–स्कन्दपुराण सूतसंहिता १।८।५-६ ।

(ट) **अहोरात्राः पञ्चदश पक्ष इत्यभिशब्दितः ।**
**द्वौ पक्षौ तु स्मृतो मासो मासौ द्वावृतुरुच्यते ॥**
**अब्दं द्वयमुक्तं च अयनं त्वृतुभिस् त्रिभिः ।**
**दक्षिणं चोत्तरं चैव सङ्ख्यातत्त्वविशारदैः ॥**–हरिवंश १।८।५-६ ।

(ठ) **त्रिंशन्मुहूर्तमहोरात्रम्, पञ्चदशाहोरात्राणि पक्षः, स च द्विविधः शुक्लः कृष्णश्च, तौ मासः, तत्र माघादयो द्वादश मासाः संवत्सरः, द्विमासिकमृतुं कृत्वा षडृतवो भवन्ति, ते शिशिर-वसन्त-ग्रीष्म-वर्षा-शरद्-धेमन्ताः, ... त एते शीतोष्णवर्षालक्षणाश् चन्द्रादित्ययोः कालविभागकरत्वादयने द्वे भवतो दक्षिणमुत्तरं च, तयोर् दक्षिणं वर्षाशरद्धेमन्ताः, ... उत्तरञ्च शिशिरवसन्तग्रीष्माः,... अथ खल्वयने द्वे युगपत् संवत्सरो भवति, ते तु पञ्च युगमिति संज्ञां लभन्ते ।**–सुश्रुतसंहिता १।६।५-९ ।

(ड) **कालमानमत ऊर्ध्वम् । त्रुटो लवो निमेषः काष्ठा कला नाडिका मुहूर्तः पूर्वापरभागौ दिवसो रात्रिः पक्षो मास ऋतुरयनं संवत्सरो युगमिति कालाः । शिशिराद्युत्तरायणम् । वर्षादि दक्षिणायनम् । द्वयनः संवत्सरः । पञ्चसंवत्सरो युगम् ।**–कौटलीय अर्थशास्त्र २।२०

(ढ) **पक्षौ पूर्वापरौ शुक्ल-कृष्णौ मासस् तु तावुभौ ।**
**द्वौद्वौ मार्गादिमासौ स्यादृतुस् तैरयनं त्रिभिः ॥**

–अमरकोश १।४।१२-१३ इत्यादि ।

प्रचलित सूर्यसिद्धान्तग्रन्थमा भने "**भानोर् मकरसङ्क्रान्तेः षण् मासा उत्तरायणम् । कर्क्यादिस् तु तथैव स्यात् षण् मासा दक्षिणायनम्** " (मानाध्याय, श्लो.९) भनेर वैदिक चान्द्रमासद्वयात्मक ऋतुहरूको वास्ता नगरी शुद्ध सौरमानका आधारमा उत्तरायण-दक्षिणायनको परिभाषा दिइएको छ । यो कुरा धार्मिक कार्यका लागि चान्द्र ऋतु मान्ने र ३ चान्द्र ऋतुहरूको वा ६ चान्द्र महिनाहरूको एक अयन मान्ने मूल वैदिक परम्पराको प्रतिकूल छ । यसबाट पनि प्रचलित सूर्यसिद्धान्त मूल वैदिक परम्पराको ग्रन्थ हैन भन्ने नै देखिन्छ । यद्यपि अयन सूर्यगतिस्थितिमूलकै कुरा हो, तथापि वैदिक धार्मिक कालगणनामा शुद्ध सौर अयन नलिएर सूर्यायनसापेक्ष चान्द्र अयन लिइने र सूर्यसिद्धान्तमा भने शुद्ध सौर अयन लिने सिद्धान्त देखिएकाले सूर्यसिद्धान्त वैदिक धार्मिक कालगणनापद्धतिको प्रतिकूलै ग्रन्थ हो भन्ने बुझिन्छ ।

फेरि सूर्यसिद्धान्तले सूर्य मकर राशिमा प्रवेश गर्दा उत्तरायण लाग्ने कुरा बताएको र सूर्यसिद्धान्तको "**पौष्णान्ते भगणः स्मृतः**" (मध्यमाधिकार, श्लो.२७), "**विकलानां कला षष्ट्या तत्षष्ट्या भाग उच्यते । तत्त्रिंशता भवेद् राशिर् भगणो द्वादशैव ते**" (मध्यमाधिकार, श्लो.२८), "**विशाखाश्विनिसौम्यानां योगतारोत्तरा**

**स्मृता**" (नक्षत्रग्रहयुत्यधिकार, श्लो.१६), "**रेवत्याश्चैव दक्षिणा**" (नक्षत्रग्रहयुत्यधिकार, श्लो.१८) इत्यादि वचनका समेत विचारबाट सूर्यसिद्धान्तमा भचक्रमा सूर्य जहाँ पुग्दा उत्तरायण लाग्छ भनिएको हो भन्ने बुझिन्छ त्यहाँ सूर्य पुग्दा उत्तरायण लाग्छ भन्ने कुरा आजभोलि दृक्सिद्ध रूपमा त मिल्दा पनि मिल्दैन भन्ने कुरा पनि स्मरणीय छ। यस कुरामा समुचित ध्यान नदिनाले र विवेक नगर्नाले आजभोलिका पञ्चाङ्गहरूले निरयणमकरसङ्क्रान्तिमा (माघे सक्रातिमा) "**उत्तरायणारम्भः**" भनी लेख्ने गरेको कुरा पनि अयथार्थ हुन गएको छ। सूर्यको वास्तविक उत्तरायणारम्भ त आजभोलि निरयणधनुर्मासको (पुसको) ६-७ गतेतिरै हुन्छ।

(४) प्रचलित सूर्यसिद्धान्तका भूगोलाध्यायमा "**देवासुराणामन्योन्यमहोरात्रं विपर्ययात्। किमर्थं तत् कथं वा स्याद् भानोर् भगणपूरणात्**", "**मेषादौ देवभागस्थे देवानां याति दर्शनम्। असुराणां तुलादौ तु सूर्यस् तद्भागसञ्चरः**", "**मेषादावुदितः सूर्यस् त्रीन् राशीनुदगुत्तरान्। सञ्चरन् प्रागहर्मध्यं पूरयेन् मेरुवासिनाम्**" इत्यादि श्लोकहरूमा (श्लोक ४, ४५, ४८, ४९, ५०, ६३, ६४, ६७) सूर्यको उत्तरगोलावलम्बनको काललाई अथवा मेषदेखि कन्यासम्मका राशिमा सूर्य रहँदाको काललाई उत्तरायण वा देवदिन मान्ने कुरा देखिन्छ। यो कुरा सूर्यसिद्धान्तकै "**भानोर् मकर-सङ्क्रान्तेः षण् मासा उत्तरायणम्**" (मानाध्याय, श्लो.९) भनी सूर्यको मकर-सङ्क्रान्तिदेखिका ६ महिनालाई उत्तरायण मान्ने कथनसित पनि मेल खाँदैन (द्रष्टव्य-भूगोलाध्याय, श्लो. ५१)। उत्तरगोलावलम्बनलाई उत्तरायण वा देवदिन मान्ने यो कुरा मूल वैदिक परम्पराका अत्यन्त प्राचीन तथा अत्यन्त मान्य अनेक ग्रन्थहरूको पनि प्रतिकूल छ। उत्तरायणका विषयमा मैत्रायणीयारण्यकमा "**मघाद्यं श्रविष्ठार्धमाग्नेयम्**" (६।१४) भनिएको छ। बौधायनश्रौतसूत्रमा "**माघमासे धनिष्ठाभिरुत्तरेणैति भानुमान्**" (२६।२९)भनिएको छ। लगधमुनिप्रोक्त वेदाङ्गज्योतिषमा "**स्यात् तदादियुगं माघस् तपःशुक्लोऽयनं ह्युदक्**" (आर्च वेदाङ्गज्योतिष, श्लो.५; याजुष वेदाङ्गज्योतिष, श्लो.६) तथा "**प्रपद्येते श्रविष्ठादौ सूर्याचन्द्रमसावुदक्। सार्पार्धे दक्षिणार्कस् तु माघश्रावणयोः सदा**" (आर्च वेदाङ्गज्योतिष, श्लो.६; याजुष वेदाङ्गज्योतिष, श्लो.७) भनिएको छ। त्यस्तै कौटलीय अर्थशास्त्रमा "**शिशिराद्युत्तरायणम्**" (२।२०) भनिएको छ। पाणिनीयव्याकरणभाष्यमा पनि "**शिशिरवसन्तावुदगयनस्थौ**" (२।२।३४, वा.३) भनिएको छ। चरकसंहितामा "**तत्राऽऽदित्यस्योदगयनमादानं च त्रीनृतूञ् छिशिरादीन् व्यवस्येत्**" (१।६।४) भनिएको छ। सुश्रुतसंहितामा पनि "**चन्द्रादित्ययोः कालविभाग-करत्वादयने द्वे भवतो दक्षिणमुत्तरञ् च, तयोर् दक्षिणं वर्षाशरद्धेमन्ताः, ...उत्तरञ् च शिशिरवसन्तग्रीष्माः**" भनिएको छ। विष्णुपुराणमा "**उत्तरायणमप्युक्तं मकरस्थे दिवाकरे**" (२।८।६८) भनिएको छ। उत्तरायण र देवदिन फरक नमानी उत्तरायणलाई नै देवदिन मान्ने कुरा मूल वैदिक परम्पराका "**अहस् तत्रोदगयनम्**" इत्यादि मनुस्मृति-प्रभृति ग्रन्थका कथनबाट (मनु. १।६७; विष्णुधर्मसूत्र २०।१; कूर्मपुराण १।५।९; पद्म-पुराण सृष्टिखण्ड ३।७; विष्णुपुराण १।३।१०; नारदीयपुराण १।५।२५; ब्रह्माण्डपुराण पूर्वभाग २९।१४; भविष्यपुराण १।२।९२; लिङ्गपुराण १।४।१६; वायुपुराण १।५७।१३; मत्स्यपुराण १४२।१०; मार्कण्डेयपुराण ४३।२५; शिवपुराण ७।१।८।८; स्कन्दपुराण

१।२।२९।५४, ५।१।४८।१५, ६।२७२।८, स्कन्दपुराणसूतसंहिता १।८।६; महाभारतशान्तिपर्व २३१।१७; हरिवंश १।८।९) स्पष्ट रूपमा बुझिन्छ । लौगाक्षिस्मृतिमा त विशेष रूपमा चान्द्र माघादिमासषट्करूप मुख्य उत्तरायणमा नै कर्म गर्नू भन्ने कुरा "**तदुत्तरायणे कार्यं माघादिष्वेव केवलम् । मुख्येषु कुर्याद् गौणेषु न कदाचन तां क्रियाम्**" भनी स्पष्ट रूपमा भनिएको छ (स्मृतिसन्दर्भ, षष्ठ भाग, पृ.२४४) । ब्रह्माण्डपुराणमा (१।२१।१५१), वायुपुराणमा (१।५०।२०१) र विष्णुपुराणमा (२।८।८१) पनि "**तपस्-तपस्यौ मधुमाधवौ च शुक्रः शुचिश् चायनमुत्तरं स्यात्**" भनिएको छ । मूल वैदिक परम्परामा श्रौतस्मार्त धर्म कृत्यमा अयनमा पनि सौरायनसापेक्ष चान्द्र अयन नै लिइन्छ, शुद्ध सौर अयन लिइँदैन । यो कुरा गएरात आधा रातपछि वा आउँदो रात आधारातयता सूर्यसङ्क्रमण हुने भएपनि जति वेला सूर्यसङ्क्रमण भयो त्यति वेलादेखि नै सौरमासको प्रारम्भ नमानी त्यसभन्दा अगाडिको वा पछाडिको सूर्योदयदेखि नै सौरमासको प्रारम्भ (१ गते) मानिएजस्तै हो । यस वस्तुस्थितिबाट पनि सूर्यको उत्तरगोलावलम्बनलाई देवदिन मान्नतिर तर्क दिएर उक्त कुरा स्थापित गर्न खोज्ने प्रचलित सूर्यसिद्धान्तग्रन्थ स्वच्छ रूपमा मूल वैदिक परम्पराको ग्रन्थ हैन भन्ने कुरा नै पुष्ट हुन्छ ।

(५) वैदिक धार्मिक कालगणनाका ऋतुहरू चान्द्र हुन् । यो कुरा ऋग्वेदका (१०।८५।१८) माध्यन्दिनीयवाजसनेयि-शुक्लयजुर्वेद-शतपथब्राह्मणका (६।७।१।१९) तैत्तिरीयकृष्णयजुर्वेदारण्यकका (३।७।३) समेत मूल वैदिक परम्पराका प्रामाणिक र अतिमान्य ग्रन्थहरूका उल्लेखका आधारमा पूर्वाचार्यहरूले स्पष्ट गरेका छन् । यो कुरा भास्करमिश्रले त्रिकाण्डमण्डन भन्ने नामले प्रसिद्ध आपस्तम्बसूत्रध्वनितार्थकारिका भन्ने ग्रन्थमा, हेमाद्रिले चतुर्वर्गचिन्तामणिका कालनिर्णयमा (पृ.१४, १६) र माधवाचार्यले कालमाधव भन्ने ग्रन्थमा (पृ.४१) पनि स्पष्ट गरेका छन् । "**मासर्त्वादिषु चान्द्रमान-मुररीकुर्याद् विशेषो न चेत्**" भन्ने दीपिकाको उक्ति (सङ्कल्परत्नावली, द्वि.सं. २०४०, पृ.१३) पनि प्रसिद्ध छ । "**श्रौतस्मार्तक्रियाः सर्वाः कुर्याच् चान्द्रमसर्तुषु**" भन्ने वचन निर्णयसिन्धुका आदिमै ऋतुनिर्णयप्रकरणमा पनि छ । यस्तै कुरा धर्मसिन्धुका प्रारम्भमा पनि छ । यस कुराको पुष्टि माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-मन्त्रार्ष-संहिताका (२२।२८, २७।४५), माध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-शतपथब्राह्मणका (१२।८।३।१४, १४।६।८।९) र आत्रेय-तैत्तिरीय-कृष्णयजुर्वेदसंहिताका (५।७।२।५, ५।७।२।६, ७।५।२५।१) उल्लेखहरूबाट पनि हुन्छ । प्रचलित सूर्यसिद्धान्तमा भने वैदिक धार्मिक कालगणनाव्यवस्थाका यी चान्द्र ऋतुहरूको कुनै उल्लेखै छैन । त्यहाँ त "**द्विराशिनाथा ऋतवस् ततोऽपि शिशिरादयः**" (मानाध्याय, श्लो.१०) भनी राशिमूलक शुद्ध सौर ऋतुहरूको मात्र प्रतिपादन गरिएको छ । ब्राह्मस्फुटसिद्धान्तमा पनि "**द्वौ द्वौ राशी मकरादृतवः षट् सूर्यगतिवशाद् भाज्याः (योज्याः) । शिशिरवसन्तग्रीष्मा वर्षाशरदः सहेमन्ताः**" भनी त्यस्तै कुरा गरिएको छ । भास्करको सिद्धान्तशिरोमणिमा पनि "**वर्षा-यनर्तुयुगपूर्वकमत्र सौरात्**" (ग्रहगणिताध्याय १।१।३१) भनी त्यस्तै नै कुरा गरिएको छ । यिनै सूर्यसिद्धान्तादि ग्रन्थले प्रचार गरेका भ्रममा परेर आधुनिक ज्योतिषीहरू मात्र हैन वैदिक र धर्मशास्त्री पण्डितहरू पनि वैदिक कालगणनाको ऋतुव्यवस्था बुझ्नै नसक्ने स्थितिमा पुगेका देखिन्छन् । यद्यपि शीतोष्णवर्षादिकारणरूप ऋतुहरू सूर्यगतिस्थिति-

मूलकै कुरा हुन्, तथापि वैदिक धार्मिक कालगणनामा सौरऋतुसापेक्ष चान्द्रऋतु नै लिइने हुनाले र सूर्यसिद्धान्त, ब्राह्मस्फुटसिद्धान्त, सिद्धान्तशिरोमणि इत्यादि प्रचलित ज्योतिषग्रन्थहरूमा वैदिक धार्मिक चान्द्र ऋतुहरूको प्रतिपादन हुँदै नभएकाले यी सूर्यसिद्धान्तादि ग्रन्थ मूल वैदिक धार्मिक परम्पराका वेदाङ्गज्योतिषशास्त्रका ग्रन्थ नभएको कुरा स्पष्ट हुन्छ। यस विषयमा अरू कुरा साझाप्रकाशनको गरिमा भन्ने मासिक पत्रिकामा (२०५५ पुस) प्रकाशित "**वैदिक परम्परामा चान्द्र ऋतुहरूको स्थान**" भन्ने निबन्धमा र वाराणसीस्थ सम्पूर्णानन्द-संस्कृत-विश्वविद्यालयको सारस्वती सुषमा भन्ने अनुसन्धानपत्रिकाको स्वर्णजयन्तीविशेषाङ्कमा (वर्ष ५१, अङ्क १-४) प्रकाशित "**जैमिनीयधर्ममीमांसाशास्त्रनिर्णीतानां वैदिककृत्यकालानां चान्द्रमाननियतत्वम्**" भन्ने निबन्धमा पनि प्रतिपादित छन्। जुन कुरा श्रुतिप्रमाणबाट सिद्ध हुन्छ त्यस कुरामा युक्तिको के वास्ता हुन्छ र ? यदि युक्ति श्रुतिको अनुकूल छ भने त्यो युक्ति जिज्ञासुहरूका लागि उपयोगी हुन सक्छ भन्ने कुरा त ज्योतिषीहरूले पनि मानिआएकै कुरा हो, जस्तै–

**श्रुतिर् यत्र प्रमाणं स्याद् युक्तिः का तत्र नारद।**
**जिज्ञासोर् युक्तिरिष्टाऽस्ति यदि श्रुत्यनुसारिणी॥**

–ज्योतिषसिद्धान्तसङ्ग्रह, वाराणसी, सन् १९१२; ब्रह्मसिद्धान्त २।६४।

(६) वैदिक मुख्य धार्मिक मास चान्द्र हो। यो कुरा वैदिक दर्शपूर्णमासयागको व्यवस्थाबाट र अरु धेरै श्रौतकर्महरूका र गृह्यसूत्रादिप्रतिपादित स्मार्तकर्महरूका व्यवस्थाबाट पनि स्पष्ट रूपमा बुझिन्छ। वर्षमा अधिमास पनि हुन सक्ने कुरा ऋग्वेदमा (१।२५।८) पनि आएकाले, ऋग्वेदमा (१।६४।१५), अथर्ववेदमा (५।६।४, ६।६१।२) र शतपथब्राह्मणमा (६।६।१।१४, ८।४।१।१६, १७, २३, २५; १०।२।५।१५, १२।३।२।१) सातौँ ऋतुको उल्लेख भएकाले, माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-मन्त्रार्षसंहितामा (७।३०, २२।३१), शाङ्खायनब्राह्मणमा (५।८, १९।२), ऐतरेयिब्राह्मणमा (२।१ [१।१२]), शतपथब्राह्मणमा (२।२।३।२७, ३।६।४।२४, द्रष्टव्य-४।३।१।५, ६।२।२।२९, ८।४।१।११७,२५; १०।२।५।१५, १०।२।६।१, १२।३।२।२), तैत्तिरीयसंहितामा (५।६।७।१-२, १।४।१४।१, ६।५।३।४) र मैत्रायणीयसंहितामा (१।१०।८, ३।१२।१३) पनि वर्षको तेरौँ मासको उल्लेख भएकाले र सौर महिनालाई लिएर वर्षमा तेरौँ मास नहुने हुनाले श्रौत-स्मार्तकृत्यकालका तपस्-तपस्य-मधु-माधवादि महिनाहरू चान्द्र महिना नै हुन् भन्ने स्पष्ट हुन्छ। माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-शतपथब्राह्मणमा (१४।९।१।१८), काण्ववाजसनेयिबृहदारण्यकोपनिषद्मा (६।२।२५) र छान्दोग्योपनिषद्मा (४।१५।५, ५।१०।१-२) पनि आपूर्यमाणपक्षको र मासको सम्बन्ध स्पष्ट रूपमा देखिएको हुनाले पनि वैदिक धार्मिक मास मुख्य रूपमा चान्द्र नै हुन् भन्ने बुझिन्छ। तैत्तिरीयब्राह्मणका "**पूर्वपक्षं देवा अन्वसृज्यन्त, अपरपक्षमन्वसुराः**" (२।२।३।१) भन्ने र "**पूर्वपक्षाश् चितयः, अपरपक्षाः पुरीषम्**" (३।१०।४।१) भन्ने वचनबाट तथा शतपथ-ब्राह्मणका "**विष्णुक्रमैर् वै प्प्रजापतिः पूर्वपक्षानसृजत वात्त्सप्प्रेणाऽपरपक्षान्**" (६।७।४।१) भन्ने वचनबाट पनि वैदिक परम्परामा अमान्त

(शुक्लादि कृष्णान्त) चान्द्रमास नै मुख्य विधानमा रहेको कुरा पनि बुझिन आउँछ । आश्वलायनगृह्यसूत्रको **"हेमन्तशिशिरयोश् चतुर्णामपरपक्षाणामष्टमीष्वष्टकाः"** (२।४।१) भन्ने वचनबाट, पारस्करगृह्यसूत्रका **"उदगयन आपू 'माणपक्षे पुण्याहे कुमार्याः पाणिङ् गृह्णणीयात्"** (१।४।५) भन्ने वचनबाट, गोभिलगृह्यसूत्रको **"चतुरष्टको हेमन्तः"** (३।१०।३) भन्ने वचनबाट, जैमिनीयधर्ममीमांसासूत्रका **"उदगयनपूर्वपक्षाहपुण्याहेषु दैवानि स्मृतिरूपान्यार्थदर्शनात्, अहनि च कर्मसाकल्यम्, इतरेषु तु पित्र्याणि"** (६।८।२३-२५) भन्ने वचनबाट र जैमिनीयधर्ममीमांसासङ्कर्षकाण्डका **"पार्वणमासानि विज्ञायन्ते"** (३।१।३०) भन्ने वचनबाट समेत वैदिक धार्मिक मास चान्द्र नै भएको कुरा अत्यन्तै स्पष्ट रूपमा बुझिन्छ ।

यजुर्वेदसंहिताहरूमा उल्लिखित तपः तपस्य मधु माधव इत्यादि मासहरू ऋतुसम्बद्ध हुनाले र शीतोष्णवर्षादिकारणरूप ऋतुहरू मूल रूपमा सूर्यगतिस्थितिमा आधृत हुनाले ती मासहरू कुनै रूपमा सौरगतिस्थितिसापेक्ष भए पनि मुख्य रूपमा त चान्द्र नै हुन् भन्ने कुरा वेदमा तिनै मासहरूका पङ्क्तिमा **अंहसस्पति** वा **अंहस्पति** भनिने **चान्द्र अधिमास**को पनि उल्लेख भएबाट स्पष्ट हुन्छ । मधु-माधवादिका पङ्क्तिमा अंहसस्पति वा अंहस्पतिको उल्लेख माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-मन्त्रार्षसंहितामा (७।३०, २२।३१), काण्ववाजसनेयिशुक्लयजुर्वेदसंहितामा (७।१२।१, २४।१८।१), तैत्तिरीयसंहितामा (१।४।१४।१, ६।५।३।४), मैत्रायणीयसंहितामा (३।१२।१३), माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-शतपथब्राह्मणमा (४।३।१।२०), काण्व-वाजसनेयिशतपथब्राह्मणमा (५।३।२।१८) र तैत्तिरीयब्राह्मणमा(३।१०।७।१) पनि पाइन्छ । शङ्करबालकृष्ण दीक्षितले पनि मधु-माधवादि मासलाई चान्द्रमास मानेकै छन् (भारतीय ज्योतिष, हिन्दी समिति, लखनऊ, सन् १९७५, पृ.५४) ।

प्रचलित सूर्यसिद्धान्तग्रन्थमा भने यथाकथञ्चित् चान्द्रमासको सम्म उल्लेख गरिएको (मानाध्याय, श्लो.१२-१४) भए पनि वैदिक चान्द्रऋतु-चान्द्रअयन-चान्द्रवर्षहरूको उपेक्षा नै गरिएको छ । त्यहाँ वैदिक मूल परम्परामा नामै नभएका सौर मेषमासादिको, सौर अयनको र सौर वर्षको नै प्रधानता मानिएको देखिन्छ (मानाध्याय, श्लो.९-१०) । मूल वैदिक ग्रन्थमा नभएका सौर षडशीतिमुख, सौर सङ्क्रान्ति, कन्या राशिमा सूर्य भएका वेलाका १६ दिन, १२ सौर सङ्क्रान्तिका विशेष नामहरू, सौर सङ्क्रान्तिको पुण्यकाल इत्यादि विषयको त्यहाँ विशेष माहात्म्य देखाइएको छ (मानाध्याय, श्लो.३-११) । वैदिक मधु-माधवादि मास ऋतुबद्ध हुन् नक्षत्रबद्ध हैनन् भन्ने कुरा **"मधुश्च्च माधवश्च्च वासन्तिकावृतू"** (माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेद-मन्त्रार्षसंहिता १३।२५, १४।६, १४।१५, १४।१६, १४।२७, १५।५७; आत्रेय-तैत्तिरीय-कृष्णयजुर्वेदसंहिता ४।४।११।११) इत्यादि वेदमन्त्रप्रमाणबाट र **"मन्त्रचोदनयोर् म्मन्त्रबलम् प्रयोगित्त्वात्"** (कात्यायनश्रौतसूत्र १।५।७) इत्यादि वचनबाट सिद्ध हुन्छ ।

वैदिकमन्त्रसंहितादिमा पाइने तपस्-तपस्य-मधु-माधवादि मासनामहरू सौरायनसापेक्ष चान्द्रमासकै नाम हुन् भन्ने कुरा माथि लेखिसकियो । माघ-फाल्गुन-

चैत्र-वैशाख इत्यादि मासनामहरू त पूर्णचन्द्रमाको मघा-फाल्गुनी-चित्रा-विशाखादि नक्षत्रसित हुन सक्ने संयोगका आधारमा प्रचलित भएका हुनाले ती सर्वथा चान्द्रमासका नाम हुन् भन्ने कुरा अत्यन्तै स्पष्ट छ। सूर्यको १२ राशिहरूको भोगका आधारमा मानिने सौरमासहरूका मेषमासादि नाम त वेदमन्त्रसंहिता, ब्राह्मणग्रन्थ, श्रौतसूत्र, गृह्यसूत्र, धर्मसूत्र, मनुस्मृति, याज्ञवल्क्यस्मृति, महाभारत इत्यादि वैदिक परम्पराका प्रमुख ग्रन्थहरूमा मेषादि राशिहरूको उल्लेखै नभएकाले मुख्य वैदिक वाङ्मयमा छँदैछैनन्। अर्वाचीन कालमा सौरमासका मेषमास, वृषमास, मिथुनमास इत्यादि नामहरू चलेको पाइन्छ। यो कुरा आशुबोधज्योतिषमा (पृ.३) खुलाएरै लेखिएको छ। सौरमासका यी नामहरू आजभोलि सौरपञ्चाङ्ग चलेका दक्षिणदेश केरलमा आजभोलि पनि प्रचलित रहेका बुझिन्छन्। नेपालोपत्यकामा पनि मल्लकालमा यी सौरमासका नाम कताकति व्यवहारमा आएका बुझिन्छन्। अनेकसम्प्रदायसङ्ग्रहात्मक भागवतादि पुराणमा पनि यी सौरमासका नाम कताकति भेटिन्छन्। तथापि यी राशिविभागमूलक सौरमास अवैदिक हुन्। त्यसैले सौरमासका आधारमा श्रौतकर्म नगर्नू गरेमा कर्म विगुण हुन्छ भन्ने कुरा लौगाक्षिस्मृतिमा खुलस्त गरी भनिएको छ। जस्तै–

**पक्षद्वयात्मको मास ऋतुर् मासद्वयात्मकः।**
**ऋतुषट्कात्मकश् चाऽब्दो मधुर् माधव एव च॥**
**वसन्त इति वेदोक्तः शुक्रश्च शुचिरप्यथ।**
**ऋतुर् ग्रीष्म इति प्रोक्तो नभा नभस्य एव च॥**
**वर्षा इति समाख्यात इषश्चोर्जश्च शारदः।**
**सहाश्चाऽपि सहस्यश्च हेमन्त इति चोदितः॥**
**तपश्चाऽपि तपस्यश्च शिशिराख्यो महात्मभिः।**
**मासपक्षर्तवः सर्वे तिथयो निखिला अपि॥**
**पक्षद्वयनिदानानि चान्द्रमानं तदात्मनि।**
**सम्यग् घटन्ते ते सर्वे न सौरे तु कदाचन॥**
**ततस् तेनैव मार्गेण श्रुत्युक्ताश् चाखिलाः क्रियाः।**
**विशेषज्ञः प्रकुर्वीत न चेत् कर्माऽखिलं तु तत्।**
**वैगुण्यमेव लभते अतः श्राद्धं च तादृशम्॥**

–लौगाक्षिस्मृति, स्मतिसन्दर्भ, षष्ठ भाग, पृ.३८२

वैक्रमाब्दका दशम शतकका कवि राजशेखरले पनि काव्यमीमांसाका अठारौँ अध्यायमा वैदिक मास-ऋतुहरू सबै नै चान्द्र नै भएको कुरा लेखेका छन्। जस्तै–

**पञ्चदशाहोरात्रः पक्षः, वर्धमानसोमः शुक्लः, वर्धमानकृष्णिमा कृष्ण इति पित्र्यं मासमानम्। अमुना च वेदोदितः कृत्स्नः क्रियाकल्पः।** ......... **एवं च द्वौ पक्षौ मासः द्वौ मासावृतुः, षण्णामृतूनां परिवर्तः संवत्सरः।**

उक्त स्थितिमा चान्द्रमानलाई समुचित महत्त्व नदिई सौरमानलाई अत्यधिक महत्त्व दिने र मेषमासादि सौरमासका आधारमा नै मुख्य रूपमा वर्षको परिभाषा

दिने (मानाध्याय, श्लो.१०) प्रचलित सूर्यसिद्धान्तग्रन्थलाई मूल वैदिक परम्पराको ग्रन्थ मान्न नमिल्ने नै देखिन्छ ।

(७) वैदिक परम्परामा तिथि पनि अहोरात्रात्मक नै मानिने कुरा वेदमा अहोरात्र-अर्धमास-मासहरूको क्रमबद्ध रूपमा उल्लेख भएकाले स्पष्ट रूपमा नै बुझिन्छ (माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेदमन्त्रार्षसंहिता २२।२८, २७।४५; माद्ध्यन्दिनीय-वाजसनेयि-शुक्लयजुर्वेदशतपथब्राह्मण १२।८।३।१४, १४।६।८।९, १४।९।१।१८,१९; तैत्तिरीयसंहिता ५।७।२।५,६; ७।१।१५।१, ७।५।२५।१) । वैदिक वाङ्मयमा तिथिशब्द दुर्लभ छ । तिथिका अर्थमा अहोरात्रशब्द वा अहःशब्द नै त्यहाँ प्रयुक्त देखिन्छ । तिथिलाई वैदिक परम्परामा अहोरात्रात्मक वा सावनदिनात्मक नै मानिने कुरा तिथिलाई अहोरात्रात्मक मानेर शुक्लपक्षका प्रतिपदाका दिन दिनमा कौस्तुभकरण रहने (श्लो. ४१) र रातमा ववकरण रहने (श्लो. ३०) इत्यादि कुरा बताउने आथर्वणज्योतिष-(अथर्ववेदीयज्योतिष-)ग्रन्थबाट पनि बुझिन्छ । वैदिक परम्परामा अहोरात्रमा अहः (दिन) नै पहिल्यै आउने र रात्रि पछि आउने कुरा शतपथब्राह्मणका **"विष्णुक्क्रमैर् वै प्प्रजापतिरहरसृजत, वात्त्सप्प्रेण रात्त्रिम्"** (६।७।४।७) भन्ने वचनका सृष्टिक्रमबाट, महाभारतका आश्वमेधिकपर्वका "**अहः पूर्वं ततो रात्रिः**"(४४।२) भन्ने वचनबाट र ब्रह्माण्डपुराणका (१।२४।१४२), लिङ्गपुराणका (१।६१।५४) तथा वायुपुराणका (१।५३।११४) "**अहोरात्रविभागानामहश् चाऽपि (आद्यं) प्रकीर्तितम्**" भन्ने वचनबाट पनि स्पष्ट हुन्छ । महाभारतका आश्वमेधिकपर्वका "**अहान्यस्तमयान्तानि उदयान्ता च शर्वरी**" (४४।१८) भन्ने वचनबाट समेत वैदिक परम्परामा दिनको गणना सूर्योदय-कालबाटै प्रारम्भ हुन्छ भन्ने कुरा पनि बुझिन्छ । यस स्थितिमा अर्धरात्रिक अहर्गण बताउने (मध्यमाधिकार, श्लो.५०) र वारप्रवृत्ति पनि मध्यरातबाटै हुने कुरा बताउने (मध्यमाधिकार, श्लो.६६) प्रचलित सूर्यसिद्धान्तग्रन्थ मूल वैदिक परम्पराको अनुकूल ग्रन्थ हैन भन्ने कुरा नै पुष्ट हुन्छ । अर्धरात्रिक अहर्गण र वारप्रवृत्ति मान्ने प्रचलित सूर्यसिद्धान्तको कुरा आर्यभटका र ब्रह्मगुप्तका साथै लल्ल-भास्करादिको पनि सम्मत छैन । यस सम्बन्धमा आर्यभटीयको "**बुधाह्न्यजार्कोदयाच् च लङ्कायाम्**" (गीतिकापाद, श्लो.४) भन्ने भनाइ, ब्राह्मस्फुटसिद्धान्तको "**चैत्र-सितादेरुदयाद् भानोर् दिनमासयुगकल्पाः। सृष्टचादौ लङ्कायां समं प्रवृत्ता दिनेऽर्कस्य**" (१।४) भन्ने भनाइ, शिष्यधीवृद्धिद भन्ने ग्रन्थको "**अर्काभ्युदयादहर्गणः**" (१।१४) भन्ने भनाइ र सिद्धान्तशिरोमणिको "**लङ्कानगर्यामुदयाच् च भानोस् तस्यैव वारे प्रथमं बभूव। मधोः सितादेर् दिनमासवर्षयुगादिकानां युगपत् प्रवृत्तिः**" (ग्रहगणिताध्याय १।१।१५) भन्ने भनाइ पनि स्मरणीय छन् । विष्णुधर्मोत्तरपुराणको ब्रह्मसिद्धान्तमा पनि "**लङ्कायामर्कोदये**" (२।६८।१) भन्ने नै उल्लेख भएको कुरा पनि यहाँ उल्लेखनीय छ । ब्राह्मस्फुटसिद्धान्तमा वारप्रवृत्ति सूर्योदयकालमा नै हुन्छ भन्ने विषयमा विशेष जोड दिँदै "**जगति तमोभूतेऽस्मिन् सृष्टचादौ भास्करादिभिः सृष्टैः। यस्माद् दिनप्रवृत्तिर् दिनवारोऽर्कोदयात् तस्मात्**" (१।३३) भन्ने तर्क समेत प्रस्तुत गरिएको छ । उक्त कुराहरूबाट पनि प्रचलित सूर्यसिद्धान्तग्रन्थ वैदिक परम्पराको अनुकूल नभएकै कुराको पुष्टि हुन्छ ।

(८) आथर्वणज्योतिषग्रन्थमा (अथर्ववेदीयज्योतिषमा) स्थिरकरणहरूको क्रम शकुनि, चतुष्पद, नाग र कौस्तुभ (किंस्तुघ्न) भन्ने मानिएको छ (श्लो.३५)। विष्णुधर्मोत्तरपुराणमा (२।१७०।१), बृहत्संहितामा (९९।१-४), पञ्चसिद्धान्तिकामा (१।१९), ब्राह्मस्फुटसिद्धान्तमा (२।६५) शिष्यधीवृद्धिदमा (मध्यमाधिकार, श्लो.२५) सिद्धान्तशिरोमणिवासनामा (स्पष्टाधिकार, श्लो.६६-६७) जगन्मोहनका करणफलाध्यायमा (प्रथम भाग, २३६), मुहूर्तचिन्ताणिपीयूषधारामा (१।४४) र शीघ्रबोधमा (पृ.८०) पनि उक्त क्रम नै पाइन्छ। धार्मिक परम्परामा पनि उक्त क्रम नै मानिएको देखिन्छ (सङ्कल्परत्नावली, द्वि.सं., पृ.१७, १८) प्रचलित सूर्यसिद्धान्तमा भने "**ध्रुवाणि शकुनिर् नागं तृतीयं च चतुष्पदम्। किंस्तुघ्नं तु चतुर्दश्याः कृष्णायाश्चाऽपरार्धतः**" (स्पष्टाधिकार, श्लो.६७)। भनी स्थिरकरणमा चतुष्पद र नाग करणको क्रम फरक मानिएको देखिन्छ। यसलाई रङ्गनाथ-विश्वनाथादि पुराना टीकाकारले यथाश्रुत रूपमा नै लिई सूर्यसिद्धान्तका मतका र वैदिकपरम्पराका क्रममा भेद भएको कुरा स्वीकारेको जस्तो बुझिन्छ। सुधाकर द्विवेदीले भने बलजफत अन्यथा व्याख्या गर्न खोजेको पाइन्छ। उनले "**प्रथमं शकुनिः तृतीयं तु नागं चतुष्पदं द्वितीयमित्यध्याहार्यम्**" भनेका छन्। द्विवेदीको यो व्याख्या मूलग्रन्थको पाठको अनुकूल नहुनाले अस्वीकार्य देखिन्छ। तसर्थ यस विषयमा पनि वैदिक परम्पराको आथर्वणज्योतिषसित र वैदिक धार्मिक परम्परासित प्रचलित सूर्यसिद्धान्तग्रन्थको प्रतिपादनले मेल नखाएको हुँदा यो सूर्यसिद्धान्तग्रन्थ मूल वैदिक परम्परासित राम्ररी मेल नखाने नै ग्रन्थ भएको कुराको पुष्टि हुन्छ।

(९) मूल वैदिक परम्पराका ब्राह्मणहरू वेदाध्ययन-यजनादि वैदिक धर्मकृत्यमा यवनादि बाह्यजनलाई अधिकार दिँदैनन्। वैष्णवहरूले भने विष्णुपूजनादिमा यवन-हरूलाई पनि अधिकार दिएको देखिन्छ। यस विषयमा हेलियोदोरस् भन्ने यवनदूतले आजभन्दा २००० वर्षभन्दा पनि अगि राखेको गरुडस्तम्भलेख भारतको मध्यप्रदेशको वेसनगरग्राममा पाइएको कुरा स्मरणीय छ। वैष्णवहरू ब्रह्मलाई वासुदेव भन्छन् (**भगवान् वासुदेवेति यं गृणन्ति हि सात्वताः**–भागवत ९।९।४९)। वैष्णवसम्प्रदायमा वासुदेव-सङ्कर्षण-प्रद्युम्न-अनिरुद्ध भन्ने चतुर्व्यूहको कल्पना गरिन्छ। प्रचलित सूर्यसिद्धान्तग्रन्थमा पनि भूगोलाध्यायमा "**वासुदेवः परं ब्रह्म तन्मूर्तिः पुरुषः परः। अव्यक्तो निर्गुणः शान्तः पञ्चविंशात् परोऽव्ययः॥ प्रकृत्यन्तर्गतो देवो बहिरन्तश्च सर्वगः। सङ्कर्षणोऽपः सृष्ट्वाऽऽदौ तासु वीर्यमवासृजत्॥ तदण्डमभवद् धैमं सर्वत्र तमसाऽऽवृतम्। तत्राऽनिरुद्धः प्रथमं व्यक्तीभूतः सनातनः**" इत्यादि भनी (श्लो.१२-१४) गरिएको वासुदेव-सङ्कर्षण-अनिरुद्धहरूको विशिष्ट उल्लेख पाइन्छ। यसबाट सूर्यसिद्धान्तकार मूल वैदिक परम्पराका ब्राह्मणहरूभन्दा अल्लि पृथक् धाराको व्यक्ति भएको कुरा झल्कन्छ। "**भूरिति वै प्प्रजापतिरिमामजनयत**" (मा.वा.शु.य.वे.शतपथ-ब्राह्मण २।१।४।११), "**स भूरिति व्याहरद् भुवमसृजत्**" (तैत्तिरीयब्राह्मण २।२।४।२), "**अस्य महतो भूतस्य निश्वसितमेतद् यदृग्वेदो यजुर्वेदः सामवेदोऽथर्वाङ्गिरसः**" (बृहदारण्यकोपनिषद् २।४।१०) इत्यादि मान्यता भएका वैदिकपरम्पराका दृष्टिले

सूर्यसिद्धान्तको 'ब्रह्माजीलाई ग्रह-नक्षत्रादिको सृष्टि गरेर नियोजन गर्न ४७४०० दिव्यवर्ष (१,७०,६४,००० मानुष वर्ष) लागे' भन्ने "**ग्रहर्क्षदेववदैत्यादि**" (१।२४) इत्यादि भनाइ पनि नमिल्दो नै देखिन्छ। यी कुराहरूबाट पनि प्रचलित सूर्यसिद्धान्तग्रन्थ मूल वैदिक परम्पराको ग्रन्थ नभएको कुराको नै पुष्टि हुन्छ।

प्रचलित सूर्यसिद्धान्तग्रन्थमा यस ग्रन्थमा प्रतिपादित सिद्धान्त गएको सत्ययुगको अन्त्यमा अर्थात् आजभन्दा २१-२२ लाख वर्षजति अगि सूर्यपुरुषबाट मयनामक महान् असुरलाई उपदिष्ट भएको भनिएको छ (१।२-९)। यो कुरा यस ग्रन्थको र आर्चज्योतिष, याजुषज्योतिष, आथर्वणज्योतिष, महाभारत, हरिवंश, सुश्रुतसंहिता, कौटलीय अर्थशास्त्र, आर्यभटीय, पञ्चसिद्धान्तिका, बृहत्संहिता, ब्राह्मस्फुटसिद्धान्त, भास्वती, स्वोपज्ञव्याख्यायुक्त अभिधर्मकोश, सुमतितन्त्र, सूर्यप्रज्ञप्ति, कालालोकप्रकाश, ज्योतिष्करण्ड इत्यादि ग्रन्थहरूको तुलनात्मक अध्ययनबाट झुटो ठहर्छ भन्ने कुरा अरू अनेक आलोचकहरूले समेत स्वीकारेकै देखिन्छ। भारतका प्रसिद्ध ज्योतिषी महामहोपाध्याय सुधाकर द्विवेदीले पनि पञ्चसिद्धान्तिकाका व्याख्यामा "**सूर्यसिद्धान्त-रचनाकालस्तु नित्यानन्देन सिद्धान्तराजकृता कलेः षट्त्रिंशच्छतमिते-ऽब्दगणे व्यतीते निगद्यते। स कालस्तु आर्यभटकृतसिद्धान्तस्य प्रसिद्ध एव। तेन सूर्यसिद्धान्त आर्यभटकृतसिद्धान्तसमकालिक एव सिध्यति, विभाति च तथ्यं नित्यानन्दप्रतिपादितम्, आर्यभटीयसिद्धान्ते न कुत्रापि सूर्यसिद्धान्तमतप्रतिपादनात्। साम्प्रतं प्रचलितः सूर्यसिद्धान्तः कृतयुगान्तकालिकस् तु केनचिदन्येन प्रकल्पितो नवीन इति स्फुटमेव सूक्ष्मविचारप्रवृत्तानां गणकानाम्**" भनी पुरानो सूर्यसिद्धान्त ३६०० कलिसंवत् बितेका वेलामा रचिएको तथा आर्यभटीयसिद्धान्तको समकालिक भएको र प्राचीन सूर्यसिद्धान्तकारभिन्न कसैबाट कल्पित कृतयुगान्तकालिक (गत सत्ययुगका अन्त्यका समयको) भनिएको प्रचलित अर्वाचीन सूर्यसिद्धान्तग्रन्थ नवीन हो भन्ने कुरा स्पष्ट छ भनेकै छन्। त्यस्तो झुटो कुरा गर्ने नवीन सूर्यसिद्धान्तग्रन्थले कसरी वेदाङ्गताको मान्यता पाउन सक्छ ? यो आसुर ग्रन्थ कसरी वेदाङ्गज्योतिषशास्त्रको मुख्य ग्रन्थ मानिन सक्छ ?

मूल रूपमा वेदमन्त्रसंहिताहरूमा र ब्राह्मणग्रन्थहरूमा विहित, उक्त, सूचित र आकाङ्क्षित विषयहरूको स्पष्टीकरण, पुष्टि, व्यवस्थापन र अनुगमन गर्न मूल रूपमा र मुख्य रूपमा मन्त्र-ब्राह्मणग्रन्थहरूबाटै विषयहरू सङ्कलित गरी साधारण पुरुषहरूलाई सुगम रूपले वेदार्थ बुझ्न र वेदार्थको अनुष्ठान गर्न सहयोग पुऱ्याउन नै वेदार्थविज्ञ मुनिहरूले वेदाङ्गग्रन्थहरू बनाएका हुन् भन्ने वैदिक परम्पराको स्थापित मान्यता छ। यो कुरा वैदिकधर्ममीमांसकशिरोमणि कुमारिलभट्टका "**वेदे व्याकरणादीनि सन्त्येवाऽऽभ्यन्तराणि नः। भवेद् वा तदभिप्राया षडङ्गाध्ययनस्मृतिः**" (तन्त्रवार्तिक १।३।२४, आनन्दाश्रमसंस्करण, पृ.१९८) भन्ने भनाइबाट स्पष्ट हुन्छ। साथै विष्णुमित्रका "**यस्मात् केवलैर् वेदवाक्यैर् न शक्यतेऽनुष्ठातुं विक्षिप्तत्वाद् वेदवाक्यानां गूढार्थत्वाच् च, अतः कविभिराद्यैर् वेदार्थकुशलैर् वेदार्थेभ्यो निष्कृष्य कर्मार्थं सुबोधानीमानि विद्यास्थानानि प्रवर्तितानि शिक्षा कल्पो व्याकरणं निरुक्तं छन्दो ज्योतिषं धर्मशास्त्रं**

**पुराणं न्यायविस्तरो मीमांसादीनि**" (ऋग्वेदप्रातिशाख्य-वर्गद्वयवृत्ति १।४) भन्ने भनाइबाट र पाणिनीयशिक्षाप्रकाशकारको "**वैदिकधर्मानुष्ठानात् पुरुषो निश्श्रेयसार्थ-फलवान् इत्येष सिद्धान्तः । अतिगूढार्थस्य वेदस्याऽज्ञानान् नाऽनुष्ठातुं शक्यो वेदमार्गः । अतः साक्षात्कृतधर्मभिर् वेदार्थेभ्यो निष्कृष्य अर्थार्थिसुखबोधाय विद्यास्थानानि प्रवर्तितानि**" (श्लो.१) भन्ने भनाइबाट पनि उक्त कुरा स्पष्ट रूपमा नै बुझिन्छ । यस मान्यताअनुसार पनि वेदाङ्गज्योतिषमा मुख्य रूपमा वैदिकयज्ञादिका लागि आवश्यक कालज्ञानका कुरालाई नै महत्त्व र प्राथमिकता दिएर वेदाकाङ्क्षित र वेदानुकूल रूपमा नै कालको निरूपण गर्नु आवश्यक र समुचित हुन्छ । भास्करले सिद्धान्तशिरोमणिमा (ग्रहगणिताध्याय १।१।९-१२), लक्ष्मणाचार्यले जगन्मोहनमा (१।११-१४), गोविन्ददैवज्ञले मुहूर्तचिन्तामणिपीयूषधारामा (१।२) पनि वेदोक्त यज्ञका लागि आवश्यक कालज्ञानको साधन हुनाले नै ज्योतिषशास्त्र वेदाङ्ग मानिने र ब्राह्मणहरूले त्यो पढ्न पर्ने भन्ने कुरा स्वीकारेकै देखिन्छ । वेदोक्त यज्ञका लागि आवश्यक वर्षगणना-अयनगणना-ऋतुगणना-मासगणना-पक्षगणना-तिथिगणनादि कालगणनालाई महत्त्व र प्राथमिकता नदिने ज्योतिषग्रन्थ कसरी वेदाङ्गज्योतिषग्रन्थ मानिन सक्छ ?

माथि उपस्थापित विवरणबाट प्रचलित सूर्यसिद्धान्त र वैदिक चान्द्रमास-चान्द्रऋतु-चान्द्रअयन-चान्द्रवर्षहरूलाई प्रधानता नदिने हुनाले वैदिक धार्मिक परम्पराका प्रतिकूल रूपमा देखिएका आर्यभटीय-ब्राह्मस्फुटसिद्धान्त-सिद्धान्तशिरोमणि-ग्रहलाघव-सिद्धान्ततत्त्वविवेकादि अरू ज्योतिषग्रन्थ पनि वेदाङ्गज्योतिषशास्त्रका प्रमुख ग्रन्थ मानिन नसक्ने कुरा स्पष्ट हुन्छ । मूल वेदाङ्गज्योतिषग्रन्थसित नबाझिेका अंशमा सम्म ती ग्रन्थ वेदाङ्ग-ज्योतिषशास्त्रका कुनै प्रकारका सहायकग्रन्थ मानिन सम्म सक्ने देखिन्छ । प्रचलित सूर्यसिद्धान्त भास्करका समयभन्दा अगि तर आर्यभट-वराहमिहिर-ब्रह्मगुप्तहरूका समयभन्दा पछि मात्र मान्य हुन आएको देखिन्छ भन्ने शङ्कर-बालकृष्ण दीक्षितको भनाइ छ । ब्रह्मगुप्त ६८५ वैक्रमाब्दतिरका हुन् भने सिद्धान्त-शिरोमणिकार भास्कर १२०७ वैक्रमाब्दतिरका हुन् । वैक्रमाब्दका सातौँ शतकदेखि नवौँ शतकसम्मको कुनै समयमा नेपाल-उपत्यकामा रचिएको भनिएको सुमतितन्त्रले पनि प्राचीन सूर्यसिद्धान्तलाई नै अँगालेको कुरा पनि चर्चामा आएकै छ । ११५६ वैक्रमाब्दमा बनेको र नेपालमा अत्यधिक रूपमा प्रचलनमा आएको भास्वती ग्रन्थले पनि यो प्रचलित सूर्यसिद्धान्त ग्रन्थलाई आधार नमानी योभन्दा प्राचीन सूर्यसिद्धान्तलाई आधार मानेको कुरा पनि यहाँ स्मरणीय छ ।

उक्त प्रकारको वस्तुस्थितिमा प्रचलित सूर्यसिद्धान्तग्रन्थको "**अल्पावशिष्टे तु कृते मयो नाम महासुरः । रहस्यं परमं पुण्यं जिज्ञासुर् ज्ञानमुत्तमम् ॥ *वेदाङ्गमग्र्य-मखिलं* ज्योतिषां गतिकारणम् । आराधयन् विवस्वन्तं तपस् तेपे सुदुश्चरम् ।**" (१।२-३) भन्ने भनाइ र "**युगमाहुः पञ्चाब्दं रविशशिनोः संहिताङ्गकारा यत् । अधिमासा-ऽवमरात्र-स्फुटतिथ्यज्ञानतस् तदसत् ॥**" (ब्राह्मस्फुटसिद्धान्त ११।२) भनी वेदाङ्ग-कारको अविवेकपूर्ण निन्दा गर्ने ब्रह्मगुप्तका अनुयायी तथा वेदाङ्गज्योतिषग्रन्थका माघशुक्लादिवर्षगणनाको स्पष्ट प्रतिकूल रूपमा "**मधोः सितादेर् दिनमासवर्ष-**

**युगादिकानां युगपत् प्रवृत्तिः**" (सिद्धान्तशिरोमणि, ग्रहगणिताध्याय, १।१।१५) भनी चैत्रशुक्लादि वर्षगणना बताउने तथा "**वर्षायनर्तुयुगपूर्वकमत्र सौरात्**" (उहीँ १।१।३१) इत्यादि भनी मूल वैदिक धार्मिक परम्पराको सौरचान्द्र वर्ष-अयन-ऋतु-मास-पक्ष-तिथि-व्यवस्थाको उपेक्षा गरी वर्षादिलाइ सौर मात्र भन्ने र तिथिलाइ चान्द्र मात्र भन्ने अनि "**दिनं सुराणाम्**" (गोलाध्याय, त्रिप्रश्नवासना, श्लो.११) इत्यादि भनी श्रुति-स्मृति-पुराणोक्त देवदिनको प्रतिकूल कुरामा अभिनिवेश देखाउने भास्करको सिद्धान्तशिरोमणिको "**वेदास् तावद् यज्ञकर्मप्रवृत्ता यज्ञाः प्रोक्तास् ते तु कालाश्रयेण। शास्त्रादस्मात् कालबोधो यतः स्याद् *वेदाङ्गत्वं* ज्यौतिषस्योक्तमस्मात्॥** ..... **वेदचक्षुः किलेदं स्मृतं ज्योतिषं *मुख्यता चाऽङ्गमध्येऽस्य* तेनोच्यते। संयुतोपीतरैः कर्णनासादिभिश् चक्षुषाऽङ्गेन हीनो न किञ्चित्करः॥ तस्माद् *द्विजैरध्ययनीयमेतत्* पुण्यं रहस्यं परमं च तत्त्वम्। यो ज्यौतिषं वेत्ति नरः स सम्यग् धर्मार्थकामाल्ँ लभते यशश् च**" (ग्रहगणिताध्याय, १।१।९,११,१२) भन्ने भनाइ पनि आफ्ना ग्रन्थलाई वेदाङ्ग भन्दै तिनको बढाइ-चढाइ गरेर भ्रम फैलाउनमा ठग बेपारीको ग्राहकलाई झुक्क्याउने विज्ञापनझैँ प्रवृत्त भएको कुरा पनि स्पष्ट हुन्छ।

वेदाङ्गज्योतिषशास्त्रका मूल ग्रन्थ त लगधमुनिप्रोक्त **आर्चज्योतिषग्रन्थ** र **याजुषज्योतिषग्रन्थ** नै हुन्। त्यसपछि **आथर्वणज्योतिषग्रन्थ**को पालो आउँछ। ती ग्रन्थका अविरोधी र अनुकूल अंशमा मात्र अरू ब्राह्म-वासिष्ठ-पौलिश-रोमक-सौरसिद्धान्तका ग्रन्थहरू, आर्यभटीय, बृहत्संहिता, ब्राह्मस्फुटसिद्धान्त, सिद्धान्तशिरोमणि, ग्रहलाघव, सिद्धान्ततत्त्वविवेक इत्यादि ग्रन्थ वेदाङ्गज्योतिषका कुनै प्रकारका सहयोगी ग्रन्थ मानिन सक्छन् भन्ने कुरा स्पष्ट हुन्छ।

यस वस्तुस्थितिमा विधर्मिप्रवर्तित आधुनिक संस्कृतशिक्षाप्रणालीले ज्योतिषादि-शिक्षा लिएका विश्वविद्यालयका प्राध्यापक डाक्टर शिक्षकहरूले र शास्त्री आचार्यहरूले पनि वृत्तिका निम्ति बाध्यतावश जेजसो कामकुरा गरेपनि वैदिक ब्राह्मणका नाताले भने यज्ञ-विवाहादि वैदिक धार्मिक कृत्यका लागि आवश्यक वर्ष-अयन-ऋतु-मासादि कालगणनाका लागि त वेदमन्त्रसंहिता-ब्राह्मणग्रन्थ-श्रौतसूत्र-गृह्यसूत्र-धर्मसूत्र-धर्ममीमांसासूत्र-स्मृति-पुराणादि मूल वैदिक वाङ्मयको अनुकूल रूपमा चल्ने कालगणना अँगाल्ने लगधप्रोक्त वेदाङ्गज्योतिषग्रन्थ नै मुख्य वेदाङ्ग मानिन र वैदिक धर्ममा मुख्य प्रमाण मानिन सक्छ, प्रचलित सूर्यसिद्धान्त ग्रन्थ र तदनुयायी त्यस्तै अरू ग्रन्थ पनि मुख्य वेदाङ्गग्रन्थ मानिन सक्तैनन् भन्ने कुरा स्वीकार्नै पर्ने तथा यस्तो कुरा स्वीकार्दा आँफ्नो जीविकामा आँच आउँछ कि भनेर अनावश्यक डर मान्न नहुने र स्पष्ट र प्रामाणिक वैदिक मूल परम्पराको अपलाप गर्ने जस्तो मूर्खतापूर्ण कुरालाई अँगालिराख्न पनि नहुने देखिन्छ।

कलिसंवत् ५०६९, तपःशुक्लप्रतिपदा
२०६०।९।९

स्वाद्ध्यायशाला, १६८, शिवभक्तमार्ग,
लाजिम्पाट, काठमाण्डु-२,
फोन ४-४३३३२७।